




# माई पोखरी

## ईलाम

### संरक्षणमा धर्म, संस्कृति र परम्पराको महत्व

जनवरी २००७



तयार गर्ने : डब्लु डब्लु एफ नेपाल / कमल कुमार साम्पाङ्ग (राई)
तस्विर : डब्लु डब्लु एफ नेपाल / कमल कुमार साम्पाङ्ग (राई)
सम्पादन : झमक बहादुर कार्की (राष्ट्रिय निकुञ्ज तथा वन्यजन्तु संरक्षण विभाग)
एलिजा स्थापित (डब्लु डब्लु एफ नेपाल)



## राष्ट्रिय प्रतिनिधिको सन्देश

सिमसार पारिस्थितिक प्रणालीको एक महत्वपूर्ण अंग हो । सिमसारले पानीको भण्डारण र स्वच्छीकरण गर्ने, स्थानिय वासिन्दाहरुलाई विभिन्न प्रकारका श्रोत उपलब्ध गराउने, विभिन्न दुर्लभ वन्यजन्तु एवं वनस्पतिलाई वासस्थान प्रदान गर्ने र धार्मिक, सांस्कृतिक, ऐतिहासिक तथा पर्यटकिय स्थलको रुपमा अतुलनिय भूमिका निर्वाह गरेको हुन्छ ।

नेपाल अनेकौं महत्वपूर्ण सिमसारको धनी राष्ट्र भएता पनि अझै यी सिमसारहरुको खोज र महत्वको विश्लेषण हुन बाँकी नै रहेको छ । तराईको कतिपय सिमसारको सर्वेक्षण तथा अनुसन्धान भई दस्तावेजहरु तयार भैसकेको छ, तर पहाडी क्षेत्रमा अवस्थित धेरै जसो सिमसारहरुको अवस्थाबारे हामी अनभिज्ञ छौं । यही जानकारीको कमिलाई परिपूर्ति गर्न डब्लु डब्लु एफ नेपालको स्वच्छ जल सम्पदा कार्यक्रम अग्रसर भएको छ ।

स्वच्छ जल सम्पदा कायक्रमले हाल उच्च हिमाली क्षेत्रमा रहेका सिमसारहरुको विवरण तयार गर्ने क्रम अगाडी बढाएको छ । यसै सन्दर्भमा प्रस्तुत पुस्तिकाले परम्परागत रुपले जीवन यापन गर्दै आएका आदिवासी जनजातीहरुले धार्मिक, ऐतिहासिक र सांस्कृतिक आस्था एवं विश्वासका आधारमा ती क्षेत्रका संरक्षण तथा उपयोग गरेको जिवन्त उदाहरणहरु प्रस्तुत गरेको छ ।

यो अनुसन्धान अगाडी बढाउन प्राविधिक रुपले सहयोग गरिदिनु भएकोमा राष्ट्रिय निकुञ्ज तथा वन्यजन्तु संरक्षण विभाग र आर्थिक सहयोग गरिदिनु भएकोमा डब्लु डब्लु एफ नेदरल्याण्ड्स/डब्लु डब्लु एफ ईन्टरनेशनल र डब्लु डब्लु एफ युके प्रति डब्लु डब्लु एफ नेपाल हार्दिक कृतज्ञता ज्ञापन गर्दछ ।

अन्त्यमा यस किसिमको विवरण संकलन र सो को प्रकाशनबाट अन्य क्षेत्रका सिमसारहरुको संरक्षण, सम्बर्धन र वुद्धिमत्ता उपयोग गर्न सघाउ पुऱ्याउने छ भन्ने मैले अपेक्षा गरेको छु ।

Manandhar

अनिल मानन्धर
राष्ट्रिय प्रतिनिधि
डब्लु डब्लु एफ नेपाल

नेपालको सूदुरपूर्व मेची अञ्चल, ईलाम जिल्ला, माई पोखरी गा.वि.स. अन्तर्गत पवित्र धार्मिक माई पोखरी पर्दछ । ६वटा अ (आलु, अलैंची, अम्लिसो, अदुवा, ओलन र अन्तु डाँडा) ले प्रख्यात मानिएको ईलाम पवित्र हिमाली भूपरिधि कार्यक्रम अन्तर्गत पर्दछ । प्राकृतिक रूपमा अवस्थित रहेको माई पोखरी समुन्द्री सतहबाट लगभग २,१०० मी. को उचाईमा रहेको पाईन्छ । सामुदायिक वन भित्र रहेको धार्मिक स्थल माई पोखरी जैविक विविधताको रूपमा महत्वपूर्ण मानिन्छ ।

माई पोखरी परिसरमा किराँत, सुनुवार, मगर, लिम्बु, राई, गुरूङ्ग, शेर्पा, तामाङ्ग, ब्राह्मण, नेवार, क्षेत्री, दलित आदि जातिका मानिसहरु रहेका छन् । ईलाममा व्यवसायिक कृषि प्रणालीको विस्तार भईसकेको छ र त्यहाँको सामाजिक आर्थिक अवस्था पनि त्यसै अनुरूप अगाडी बढिसकेको देखिन्छ ।

सीमसार क्षेत्रमा धेरै धनी मानिएको ईलाम जिल्लामा बिभिन्न रूपमा रहेको सीमसार क्षेत्रहरू छन् । माई पोखरी, हाँसपोखरी, मुडके, गोर्खे धाप, सन्तपुर, कालपोखरी र ढुङ्गेपोखरी जस्ता सीमसार र माई, जोक माई, पुवा र देउमाइ जस्ता पवित्र खोलाहरू महत्वपूर्ण छन् भन्ने तथ्य सहभागीतामूलक छलफल अध्ययन कार्यक्रममा अंकित गरिएको थियो ।



## सांस्कृतिक, धार्मिक र परम्परागत मूल्यमान्यता

समुदायहरूको बीचमा सहभागितामूलक अध्ययन छलफल कार्यक्रम माई पोखरी इलाममा राखिएको थियो । स्थानीय बुद्धिजिवी, समाजसेवी, धामी, झाँक्री, साधु-सन्त, शिक्षक, माई पोखरी धार्मिक सामुदायिक वनका पदाधिकारीहरू र होटेलवालाहरू उक्त छलफलमा सहभागी रहनु भएको थियो। छलफलको क्रममा त्यस ठाउँको भौगोलिक अवस्था, वनजङ्गल, मान्यस्थल, बन्यजन्तु, पंक्षी, धार्मिक आस्था, विश्वास, धर्मावलम्बीहरूको चाप, पानीको अवस्था, परम्परागत जनविश्वास, घटनाक्रम आदिको बारेमा अध्ययन गरियो । सर्वप्रथम यस कार्यको वृतान्त गरिएपछि सहभागीहरूले छलफल गर्दै माई पोखरी परिसरको ९0 हेक्टर क्षेत्रफल भित्र पर्ने धार्मिक वन, धार्मिक प्रयोजनको निमित्त प्रयोग हुने घर, धुनी, पूजा गर्ने ठाउँ, जान नहुने वन्यजन्तु बस्ने क्षेत्र, गाउँलेहरूले खान हुने जङ्गली तरकारी, धार्मिक वनस्पति आदिको वर्णन नक्सा रेखाङ्कन द्वारा गर्नु भएको थियो । त्यसैगरी माई पोखरीमा नौ कुना रहेको र उत्पत्तिकालमा नौ वटा देवीहरू आई बास बस्दा उक्त माई पोखरीको सृजना भएको भनाई पनि पुर्खाहरूले भन्नु भएको भन्ने जानकारी प्राप्त भयो । त्यसैगरी मुख्य रूपमा बुढापाकाहरुलाई सहभागी गराई माई पोखरी बारेमा वहाँहरूको अनुभव, मौखिक रूपमा वहाँहरूले सुनी आएका, देखि आएका घत्लाग्दा कथनहरुबारे गहन तरिकाले छलफल गरिएको थियो । सहभागीहरूले माई पोखरीमा धार्मिक आस्था लिएर आउने समुदायहरूको चित्राङ्कन पनि तयार पार्नु भएको थियो ।

"पहिला पहिला एउटा सानो चरी थियो । उसले पोखरीमा खसेको पातहरू अनकण्टार ठाउँमा पुऱ्याई पोखरीको पानी सफा गर्ने गर्दथ्यो तर आजभोली उक्त चरी देखिन छाडेको छ ।"

माई पोखरी परिसरको ५० हेक्टर क्षेत्रफल भित्र पर्ने धार्मिक वन, धार्मिक प्रयोजनको निमित्त प्रयोग हुने घर, धुनी, पूजा गर्ने ठाउँ, जाल नहुने वन्यजन्तु बस्ने क्षेत्र, धार्मिक वनस्पति आदिको वर्णन नक्सा रेखाङ्कन चित्र

"उत्तर पश्चिम छेउमा एउटा गुफा रहेको छ र त्यसको छेउमा औंसी पूर्णिमामा बत्ती बल्छ भन्ने कुरा हामीले सुनेका छौं ।"

"पहिला पहिला टाढाबाट आउने यात्रु तीर्थालु भक्तजनहरूलाई खाना पठाउने र वर्तन दिने माई पोखरीको शक्ति थियो ।"

माई पोखरीमा धार्मिक आस्था लिएर आउने समुदायहरूको रेखाङ्कन चित्र





## घटना अध्ययन: मगर समुदाय

मगर समुदाय किराँत वंशभित्र पर्ने एक समूह हो । माई पोखरी नजिकैको सुलुवुङ गा.वि.स.मा आफ्नो पुर्ख्यौली साँस्कृतिक परम्पराको माई पोखरीसँग अन्योन्याश्रित सम्बन्ध रहेको कुरा धन बहादुर बुर्जामगर सुनाउनु हुन्छ । पुजारी मगरको भनाईको भाव अनुसार मौलिक भाषा, सँस्कृति, परम्परा, रितिरिवाज, धार्मिक सीमसार या निजी पानी, खोला, कुवा, पानीको मूल, पोखरी र कुण्ड आस्थाको बिन्दुको रूपमा जनजातीसंग गहिरो सम्बन्ध भएको हुँदोरहेछ भन्ने कुरा बुझ्फाउँछ । आधुनिक समाजबाट लोपोन्मूख मारूनी नाचको माई पोखरी सीमसार पारिस्थितीक प्रणालीसँग अनुपम सम्बन्ध रहेको हुनाले पराम्परागत रितिरिवाजको जगेर्ना गर्नु पर्ने अति आवश्यक देखिन्छ ।



**"हाम्रो पुर्खाहरूले प्रयोगमा ल्याउनु भएको पुरानो सँस्कृति अनुरुप हामी माई पोखरीमा आई पूजाआजा गरी बल, स्वर र ताल माग्ने गर्दछौं । पहिला यस प्रकारको सँस्कृतिलाई मारूनी नाच भनिन्थ्यो र समाजमा यसको राम्रो सम्मान थियो, तर आजभोलीका पुस्ताहरूले यस प्रकारको नाच राम्रो मान्दैनन् ।"**



**"हामीले घरको कुल देवतालाई सम्मान गरी वहाँहरू सँग बल माग्ने चलन छ । त्यसपछि माई पोखरीमा पूजाआजा गर्ने हाम्रो पुरानो धार्मिक परम्परा छ । यसरी माई पोखरीमा पूजाआजा गर्दै, बन, पानी, रूख, आगो, हावा, ढुङ्गा, माटो, धर्ती आदिसँग रहेका देव, देवी, देवताहरूलाई बोलाउँदै स्वर, ताल, तलैया र त्यसै अनुसार मारूनी नाच शुरू गर्ने पुरानो चलन हो ।"**



**"हाम्रो मारूनी नाचमा मादल बजाउँदै महिलाको स्वरूप बदलेर नाच्ने मानिसले आफ्नो हातमा कासकुटको थाल लिएर झ्याँक्री मादलको स्वरमा नाच्नु पर्ने हुन्छ र अर्का एकजना दाउरा खोजेको, काटेको अनुसारमा नाच्दै माई पोखरीको आराधना गनुपर्छ । पछि गाउँघरमा नाच लैजाँदा थालमा पैसा राखी दिने र अन्य दक्षिणा दिने परम्परागत प्रचलन छ । यस्तो परम्परा दिपावलीमा एक दुई महिनासम्म नाच्ने चलन थियो । यो नाच नाचि सकेपछि, माई पोखरीमा आई दान दक्षिणा भेटी चढाई तपाईहरूले दिनु भएको बल बरदान, स्वर र तालको निमित्त धेरै धेरै धन्यवाद छ, गल्ती भएमा क्षमा चाहन्छौं, तपाईहरू सधैं यहाँनै बसी रहनु होला भन्दै यस नाचको बिसर्जन गर्ने हाम्रो परम्परा छ ।"**

## निर्मल माईको आत्मकथा

माता निर्मल माई हाल ९१ बर्षको हुनुहुन्छ। वहाँ आफ्नो युवाअवस्था देखि वर्तमानकालसम्म माई पोखरी पारिस्थितीकिय प्रणाली भित्र बसी रहनु भएको छ। उहाँको श्रीमान, नारायण दिल जो किराँत सुनुवार (मुखिया) जसमनीका धर्मावलम्बी हुनुहुन्थ्यो, हाल स्वर्गवास भईसक्नु भयो। ऐतिहासिक तथ्य, खोज, धार्मिक मान्यता, घटना, मौलिक परम्परा सम्बन्धी जानकारीका निम्ति निर्मल माईलाई साक्षीको रूपमा छानिएको थियो। त्यसै सन्दर्भमा निर्मल माई आफ्नो विगत तर्फ फर्केर भन्नु हुन्छ

**"म त्यस समयमा उमेरले भक्खरकै थिएँ । धेरै पहिलाको घटना हो, त्यस समयमा बाला गुरू आउनु भएछ र १६ बिभिन्न रङ्को बत्ती माई पोखरीमा राखी, हे माई पोखरी तपाई यस्तो नाङ्गो एकान्त ठाउँमा आएर किन बस्नु भएको भनी प्रश्न सोध्नु भएछ । उत्तरमा माई पोखरीले हामी नौ बहिनी पोखरीको उत्तरमा राष्ट्र सेवकको रूपमा बसेका छौ भन्ने जवाफ दिईछन् । त्यो बृतान्त बाला गुरूले मलाई सुनाउँदै भन्नुभयो, माता तपाई असाध्यै भाग्यमानी हुनु हुँदो रहेछ किनकि यस्तो माई पोखरी आमासँग बस्नु पाउनु भएको छ । तपाई यहाँ रहुन्जेल सबै आगन्तुक, दाजुभाई, दिदीबहिनी, ईष्टमित्रलाई माई पोखरीको पानी शीरमा राखी दिनु र माई पोखरीको नाउँ लिएर मनोकांक्षा पुरा हुने आशिर्वाद दिनु । हालसम्म म त्यसै गरिरहेकी छु ।"**





**"म र मेरा श्रीमान कैलाशमा भएका पोखरीहरू घुम्न जाने गर्दथ्यौं, जस्तै विष्णु (तिम्बु), लक्ष्मी, जम्ले, लम्बा, निर, मयूर, रामलक्ष्मण, भ्न्याम्पटे, ढुङ्गे र ढुधपोखरी आदि । हामी दुई तिन बर्षको बीचमा धर्मको रूपमा तीर्थ जाने गर्दथ्यौं । ती पोखरीहरूबाट पानी लिएर माई पोखरीमा राखेका छौं, बडो पवित्र र शक्तिशाली छ । बज्र, हुरीबतास आदिबाट सुरक्षा गर्दछ । ईलाममा भूमि सुधार लागू भएपछि माई पोखरीलाई धामी क्षेत्र भनी छुटाई दिए र फलामे तारले घेरा लगाई दिए । त्यसपछि श्रीमान नारायण दिल ६ किलो चामल, १ किलो घ्यू लिएर दार्जिलिङ्गको सुक्य भन्ने ठाउँ जानु भयो । उहाँले त्यस ठाउँमा भएका नर्सरी रेखदेख गर्ने पालेलाई बेलीबिस्तार सुनाउँदै बोट बिरूवाको अनुरोध गर्नु भएछ । पालेले धर्मको लागि रहेछ, साधुबा बिहानको पहिलो पहलमा तपाई सिमाना कटीसकेको हुनु पर्छ, बोक्न सक्ने गरी लैजाउ, म हराएछ भनी बताउला भनेपछी नारायण दिलले त्यसैगरी रातको १२ बजेकै समयमा धुपी सल्ला लगायतका बिरूवाहरू लिएर बाटोमा जङ्ली जनावरले आक्रमण गर्छकि भन्दै सिमाना कटाएर नेपाल ल्याउनु भएछ । पाँच छ दिनमा माई पोखरीमा ल्याई रोपेको बोट बिरूवाहरू हाल यहाँ वरिपरी भएका रुखहरु हुन् । त्यसपछि बिभिन्न ठाउँ घुम्न जाँदा पाइएका बोट बिरूवाहरू ल्याउँदै आफ्नै इच्छाले रोपी हुर्काएको यो धार्मिक बन हो ।"**

वहाँहरूले बिभिन्न ठाउँमा जाँदा पाइएका र माई पोखरी लिएर आई रोपेका बिरूवाहरू निम्न टेबलमा समावेश छ ।

| छिनटापु | जिमीरबाद | तुम्लीङ | टप्पु | स्थानीय |
|---|---|---|---|---|
| ढ्याङग्रे | भद्रासे | पतलीङ्गे | अरमोठे | माल्टो |
| सल्ला | नाग्रे | | | कटुस |
| गोब्रे सल्ला | दबदबे | | | बजराठ |
| लालचन्द | | | | फलेदो |
| खस्रो | | | | सेतो र रातो गुँरास |
| | | | | मयल |
| | | | | सीलटिमुर |
| | | | | निवारो |
| | | | | गोगन |
| | | | | साउर |
| | | | | उत्तिस |
| | | | | अरपाते |

**"माई पोखरी शक्तिशाली छ । मैले औंसी पूर्णिमामा नीलो, हरियो, पँहेलो गरी बिभिन्न रङ्गको बत्ती बलेको देखेको छु । कहिले काँही बाजा बजेको आवाज सुनिन्थ्यो । कसैले फोहर गऱ्यो भने र नराम्रो चितायो भने माई पोखरी रिसाउँछिन् ।"**

यसरी माई पोखरी हरियाली बनाउनुमा निर्मल माई र नारायण दिलको धार्मिक र साँस्कृतिक योगदान रहेको प्रष्ट हुन आउँछ। विविध वनस्पति यत्रतत्र रोप्दै जाने परम्परा, प्राकृतिक नियम र धार्मिक मान्यता अनुरूप आज हरेक चराचुरूङ्गीहरू, वन्यजन्तु, उभयचर, थलचर, नवचर, जलचर आदिको बासस्थान भएको क्षेत्र र मानवको लागि आस्थाको बिन्दु माईपोखरी रहेको छ।

**"माई पोखरीमा गलैंचे झार थियो रे, त्यस समयमा त पानीमा खेल्न पानी हाँस आउने र उक्त गलैंचे झार माथि घाम तापेर बस्ने गर्थ्यो रे । जब केही व्यक्ति जिल्ला सदरमुकामबाट आएर गलैंचे झार निकाल्ने काम भयो, तब देखि हाँस पनि आउन छाडेको जस्तो छ । गलैंचे झार निकाल्ने समयमा नारायण दिलले यसो गर्नु हुन्न नराम्रो घटना हुन सक्छ भन्दा भन्दै पनि हटाउने कार्य हुँदा नौ दिनपछि नारायण दिल बिरामी हुनु भयो र नौ महिनामा स्वर्गबास हुनु भयो ।"**

**"सबैले पानी घटेको छ, पोखरीमा बाहिरबाट पानी ल्याएर लगाएको छ रे भनी सुन्छु । म गएर हेर्न सक्तिन । माई पोखरीमा त आफैले पानीको व्यबस्था गर्नु हुन्छ । त्यसरी मनपरी गर्दा नराम्रो हुन सक्छ, चित्त दुखाउन सक्छ । पहिला कस्ले के गऱ्यो कुन्नी यस पोखरीको एक कुनाबाट पहिरो गयो । एक बहिनी रिसाएर गएको भन्दै नारायण दिलले भन्नुभयो ।"**

छलफल गर्ने क्रममा निर्मल माई र नारायण दिलको जेठो छोरा **उदय बहादुर मुखिया** (सुनुवार) भन्नुहुन्छ

**"मैले विक्रम सम्बत २०४५ सालदेखि माई पोखरीमा पानी तह ४ फिटको हाराहारीमा घटेको अनुमान गरेको छु । त्यसैगरी विक्रम सम्बत २०६१ पौष १९ मा आएको सुनामीको असर माई पोखरीमा आएको रहेछ । सबेरै पोखरीमा आउँदा त पोखरीको पानी पर पर सम्म छल्को गएको ठाउँ छ । अनुमान गर्दा ७ मीटर परसम्म पोखरीको पानी पुग्नुमा पोखरीको पानी लगभग १३ मीटरको उचाईमा उठेको हुनुपर्छ । मैले अचम्म मान्दै गाउँलेहरूलाई बोलाई हेर्न लगाए ।"**



त्यसपछि गाउँलेहरू आएर माई पोखरीको पूजाआजा गर्ने गरेको र गाउँलेहरूले पनि पोखरीको पानीले परसम्म जमीन ताजै देखेको कुरा बताए। पोखरीमा प्राकृतिक र दैबी शक्तिको अथाह सागर छ। मान र सम्मानको रूपमा यो संरक्षित रहेको पाईन्छ।





**उदय बहादुर मुखिया (सुनवार), अवशेषको रुपमा रहेको गलैंचे झार देखाउँदै भन्नुहुन्छ**

"यो झार माई पोखरीमा मात्र पाइने रैथाने वनस्पति पो रहेछ। पहिला त पोखरी नै ढाक्ने गरी फैलिएको थियो यो झार। त्यस वखत थुप्रै पानी हाँसहरु यस ठाउँमा आउने, खेल्ने र केही समय विताए पछि बसाई सरी अन्तै जाने गर्दथे। आजभोली यस कुनामा रहेको गलैंचे झारको नमुना हो। जिल्लाबाट खटाई आएका मानिसहरुले पोखरीबाट यस रैथाने झारलाई झिके पछि गाउँलेहरुले यस क्षेत्रमा पर्यटन विकास गर्नुपर्छ भनी डुँगा चलाउनु थाले। पोखरीमा त्यसरी डुँगा चलाउने गर्दा पोखरीमा भएका माछाहरु फटा-फट मर्न थाल्यो। लौ माई देवीहरु रिसाउनु भो, चित्त दुःखाउनु भो होला, अब देखि यस पवित्र माई पोखरीमा डुँगा चलाउन छाड्नु पर्छ भनी बन्द गरियो। डुँगा चलाउन रोकेदेखि यस पोखरीमा त्यसरी लछ्यपै हुने गरी माछा मरेको छैन। मेरो बुबा नारायण दिल गलैचे झार भिक्ने समयमा यसो गर्नुहुन्न, माई भगवती, देवी साक्षात हुनुहुन्छ, राम्रो चिताउनु पर्छ, चिताएको पुऱ्याइदिनु हुन्छ। यसरी मनपरी गर्दा माई भगवती रिसाउनु हुन्छ र समाजमा नराम्रो घटना दुर्घटना हुन सक्छ भन्नु भएको थियो। नभन्दै उक्त गलैचे झार झिक्न शुरु गरेको नौ दिनदेखि बिराम हुनु भएको नौ महिनामा दिवङ्गत हुनु भो। त्यसपछि पोखरीमा पर्यटन विकास गर्ने नाममा चलाइएको डुङ्गा, त्यसपछि मरेका माछा र डुँगा चलाउन छाडे पछिको अवस्था मेरो जीवनमा आइपरेको घटना क्रमहरु हुन्। यी सबैको अर्थ दैव शक्ति सामुन्ने हनु हो र उहाँ साक्षात माइ भगवती, देवीले प्राकृतिक जगतको संरक्षण गर्नुहुन्छ।"





**अतित स्मरण गर्दै माई पोखरीको जैविक गोरेटोको विकास र भविष्यबारे वहाँ यसो भन्नुहुन्छ–**



> “आमा र बुवाले विभिन्न ठाउँमा तीर्थ जानुभएको समयमा त्यहाँबाट ल्याई रोप्नु भएको वन जंगल आज यस्तो छ । विभिन्न जातका बोट बिरुवाहरु पाइने यस धार्मिक वन क्षेत्रमा जात जातिका वन्यजन्तु, पंक्षीहरु बस्ने, आउने–जाने गर्दछन् । यस क्षेत्रलाई अन्य क्षेत्रसंग संरक्षण गर्दै, सम्बन्ध विस्तार गर्न सके राम्रो हुने थियो । माई पोखरीको उत्तरमा कन्चनजंघा संरक्षण क्षेत्र र दक्षिणमा गरुवा उपत्यका, त्यसैगरी पूर्वमा भारतको सींघलिला राष्ट्रिय निकुञ्जसंग जोडिएको हाम्रो प्राकृतिक वन र पश्चिममा रहेको प्राकृतिक वन नै मुख्य हो ।”



धर्मकै नाममा उदय बहादुरले पनि विभिन्न कार्यक्रम गरी राख्नु हुन्छ । उहाँकै पहलमा “धर्मको लागि भवन” र माई पोखरी धार्मिक महोत्सव २०६२, आयोजना गरिएको थियो जसमा डब्लु डब्लु एफको पनि सहभागिता थियो । वृहत् सोच राख्ने प्रकृति प्रेमी उदय बहादुर मुखिया (सुनुवार) को विचार, विमर्श र ज्ञानलाई संरक्षणमा लागु गर्न सके सुनमा सुगन्ध हुने थियो होला ।

एक सामुहिक छलफलको क्रममा एक सहभागीले माई पोखरीमा घटेको ऐतिहासिक घटना बारेमा यस्तो भन्नुहुन्छ

> "राणा कालमा दक्षिण भारतबाट एकजना योगी आएर माई पोखरीमा कोटीहोम लगाउन शुरू गरेछ । सबै गाउँलेहरूले गाईको दुध, घ्यू, चामल, धान, फलफूल, पैसा, गाई इत्यादि चढाउदै गईरहेको समयमा माई पोखरी नजिकमा रहेको एक परिवारले ईलाम सदरमुकाममा गई राणाकालिन प्रमुखलाई एक साधु आई गाउँलेहरूलाई अन्न, पैसा, दुध, घ्यू ल्याउन बाध्य बनाइएको छ, हटाउनु पर्ने जस्ता बिन्ति गरेपछि त्यसको समाधानको निमित्त कार्यवाही गर्ने नाउँमा मानिस खटिएको खबर सुनेर उक्त कोटीहोमका योगी पूजा पुरा नहुँदै केही गाउँलेहरूले धर्मको लागि चढाएको पैसा आफुले र बाँकी सम्पत्ति पोखरीको बीच क्षेत्रमा फालेर उत्तर तर्फ लाग्नु भएछ । त्यो समयदेखि यता उक्त परिवारमा वर्तमानसम्म पनि अपाङ्ग सन्तान जन्मने गरेको छ । समाजका जो कोहीले त्यसरी नराम्रो विचारले कार्य गरे नराम्रो घटना घट्ने सत्यता रहेको छ ।"

माई पोखरी एक अलौकिक अदभूत सत्यताले पूर्ण नौ देवी संसारिक रक्षाको लागि रहेको साक्षात आस्थाको स्थल रहेछ भन्ने विश्वास यसरी बिभिन्न कुराहरूले प्रष्ट भएको छ।

> "विश्वास र घटनाक्रमानुसार धार्मिक परम्पराले माई पोखरीको संरक्षणमा योगदान पुऱ्याई रहेको देखिन्छ ।"

> "सन्तान नहुने जोडीले माई पोखरीमा आई पूजा आराधना गरे सन्तान प्राप्ती हन्छ ।"

> "माई पोखरीमा फलफूल चढाउने र पूर्वी कुनामा मात्र पूजा गर्ने परम्परा छ । फूल, धुप र पातको दुनामा तेलको बत्ती बाली पोखरीको पवित्र निर्मल जलले बत्तीलाई पर्साइ पूजा गरी पानी निधार वा शिरमा चढाई चिताएको कार्य पुरा हुने विश्वास गर्ने परम्परा छ । यस भित्र बली चढाउने, शिकार खेल्ने काम गर्नु हुन्न भन्ने जनविश्वास रहेको हुनाले जो कोही त्यसो गर्न डराउँछन् र गर्दैनन् पनि ।"

## घटना अध्ययनः माई पोखरी महोत्सव २०६२

माई पोखरी धार्मिक महोत्सव २०६२ को अवसर मा हजारौंको संख्यामा विभिन्न जिल्लादेखि भक्तजन, पुजारी र सहभागीहरु माई पोखरीको दर्शन गरी आ-आफ्नो मनोभावना व्यक्त गर्न पाल्नु भएको देखिन्थ्यो । अधिकांश आगन्तुक पाहुनाहरुको एउटै चाहना थियो : माई पोखरीलाई शिरोपर राखी शान्ती छाओस् ।



### ८० वर्षको एक वृद्ध महिला भन्नुहुन्छ–

> "बाबु माई भगवतीसंग शान्तीको कामना गर्न आको ।"

कविता निबन्धहरु पनि माई पोखरीलाई सम्बोधन गरी शान्तीकै निमित्त वाचन गरिएको थियो । त्यसरी नै नित्यहरु पनि "माइ भगवती शान्ती देउ" शान्ती कै निम्ति भावना दर्साउने स्वभावका थिए । सदैव कृषि र घरायसी काममा जोतिनु परेका इलामेली महिलाहरु आफ्नो वेदना र रोदनलाई हाँसोको रुपमा माई भगवती, देवीको नाम लिँदै संगीनी परम्परागत नाच देखाइ राख्नु भएका थियो ।

विभिन्न जात-जातीहरुको धार्मिक सांस्कृति झल्काउने परम्परागत वाजा-गाजा र नाच लिएर "हाम्रो लागि भगवती देवी माता हुनुहुन्छ । उहाँ हाम्रो दुःख, कष्ट, पीर, मर्कालाई बुझिदिनु हुन्छ" भनि आउने पुरानो चलन रहेछ । आफ्नो गच्छे अनुसारले माई पोखरीसंग वल, वरदान र भावना पोख्ने किराँतीहरुको ऐतिहासिक साकेला शीली माटो, ढुँगा, हावा, पानी, वोट, विरुवा, किरा फट्याङ्ग्रा खोला-नाला, पानी, पँधेरा, अन्न, बाली देवी, देउता, पुकारदै माई पोखरी आदि फलाक्दै अव आउने समय, मौसम हाम्रो लागि फलदायी होस् भन्ने सांस्कृतिक, प्राकृतिक धर्मको पुर्ख्यौली चलन रहेछ ।



खेतवारीमा वर्षे बाली लगाउनु अघि अबको मौसम अन्नबाली लगाउने समय भएको जस्तो छ : त्यसैले हामी माटोमा, धर्तीमा खनजोत गर्न जानु पर्ने समय आएको छ भनी मातालाई सुनाउँछौं । हाम्रो पुर्खाले गरि आएको परम्परालाई कायम राख्न र हाम्रो प्राणको लागि अन्नबाली लगाउनु पर्ने हाम्रो चलन अनुसार धर्ती मातालाई चलाउनु पर्ने र त्यसरी धर्तीलाई चलाउँदा जीवजन्तुहरुको ज्यान जोखिममा पर्न सक्छ । हामीले लगाएको विउ-विजन राम्रोसँग बिजारोपण हुन पाओस्, रोग-किरा नलागोस्, राम्रो फलोस्, त्यसको लागि राम्रो हावापानीको कामना गर्दछौं भनी साकेला शीली वैशाखमा एक पल्ट र बाली उठाई सकेपछि मंसीरमा अर्को पल्ट मनाउनु पर्ने रहेछ । यो प्रचलनको माई पोखरीसँग अन्योन्याश्रित सम्बन्ध रहेको किराँती संस्कारले देखाउँछ । प्राकृतिक तथा पित्रीत्मक किराँतीहरुले परम्परागत अन्न, बाली, पशु पंक्षीहरूलाई पुर्खाहरुको प्रतीक सम्झने र बाली उठाई सकेपछि आफूले प्रयोग गर्नु भन्दा अगाडि पित्री आत्महरुलाई चढाउनु पर्ने परम्पराले कृषि क्षेत्रले पनि जैविक विविधता जोगाइ राखेको कुरा सहभागी एक वृद्धले बताउनु भयो ।





त्यसै गरी लिम्बु समाजमा च्याबुङ्ग नाचको अति महत्व रहेछ । माई पोखरी नजिकैबाट ल्याइएको लामो लाव-लसकर लिम्बु जातीहरुको पैरन र वहाँहरुको परम्परागत बजाउने च्याबुङ्ग नाचले माई पोखरीसँगको सम्बन्ध देखाउँदछ । सहभागी एकजना भन्छन् -






**"हामी आज यस महोत्सव शान्तिको कामना गर्न माई पोखरी आएका छौं ।"**



# जैविक विविधता र संरक्षण

जैविक विविधता बारे छलफल कार्यमा सहभागीहरू भन्छन्

> **"हामी गर्वको साथ भन्न सक्छौ कि हाम्रो माई पोखरी परिसरले जैविक विविधता संरक्षण कार्यमा अतुलनिय योगदान पुऱ्याईरहेको छ किनकि पूर्वमा भारतको सिंहलिला निकुञ्ज, उत्तरमा कञ्चनजंगा, दक्षिणमा माई खोला रं गरूवा उपत्यका हुँदै तराई फाँटसम्म फैलिएको प्राकृतिक संजाल छ । स्थानीय विभिन्न चराहरूको प्रजाति, बसाई सराई गरी आउने चराहरू, मृग लगायत थुप्रै वन्यजन्तुहरू बस्ने, आउने जाने गरेको तथ्यले पनि यसको महत्व बुझाउँछ । उभयचर परिवारमा पर्ने पानी गोहरो, छेपारो जस्तो देखिने नेपालको एकमात्र भ्यागुता समूह अन्तर्गत रहेको सेलेमेन्डर (जो पूर्वी नेपालको रैथाने प्रजाति हो), माई पोखरी सीमसार क्षेत्रमा पाईने गरेको बिभिन्न प्रकारको सुनाखरी, लालीगुँरास माई पोखरीको जैविक विविधताका उदाहारण हुन ।"**

इलाममा मात्र १८ प्रजातिको सुनाखरी पाइन्छ भन्ने भनाई छ। माई पोखरी धार्मिक वनमा पहिला पहिला शुद्ध रातो फूल्ने सुनाखरी भएको तर आजभोलि पाउन छाडेको गुनासो त्यहाँ बस्ने धर्मावलम्बीहरु गर्छन्। माई पोखरी परिसरमा धार्मिक मनोकांक्षा पूरा गर्नको लागि जिउँदो परेवा उडाउने परम्परा रहेछ। आमा बाबुको मायाबाट टाढा पारी ल्याएको उड्न नसक्ने परेवाको बच्चालाई बचाउनु पर्छ भन्ने व्यवहारले संरक्षण भावना सोचमा निर्भर गर्दछ भन्ने प्रष्ट हुन आउँछ।









धार्मिक, साँस्कृतिक जनआस्थाको केन्द्रको रूपमा रहेको माई पोखरी नारायण दिल र निर्मल माईको योगदान, विभिन्न योगी, धार्मिक विद्वानहरूको योग, दैव शक्ति र जैविक विविधताको अमूल्य मिश्रण हो । परम्परादेखि चलिआएको जनजातिय प्रचलनहरुको माध्यमबाट प्राकृतिक रूपमा रहेको उच्च पहाडी भेगको बादले बन र माई पोखरीसँग सम्बन्धित जैविक विविधताको दीर्घकालिन संरक्षण कार्यलाई अझ बढी प्राथमिकताकासाथ अगाडि बढाउनु अति आवश्यक देखिन्छ ।

WWF Nepal acknowledges with gratitude the support received for the Freshwater Program from all our partners, donors and supporters: Government of Nepal; Ministry of Forests and Soil Conservation (MFSC); Department of National Parks and Wildlife Conservation (DNPWC); Department of Forests (DoF); Department of Plant Resources; Water and Energy Commission Secretariat (WECS); WWF International; WWF UK; WWF US; WWF Netherlands; WWF Finland; WWF Sweden; Swedish International Development Cooperation Agency (SIDA); International Water Management Institute (IWMI); and Community Based Organizations



२०२९ सालमा नेपालले राष्ट्रिय निकुन्ज तथा वन्यजन्तु संरक्षण ऐनको निर्माण गरेर वन्यजन्तु संरक्षणको आधुनिक युगमा प्रवेश गरेको थियो । राष्ट्रिय निकुन्ज तथा वन्यजन्तु संरक्षण विभागको ९ वटा राष्ट्रिय निकुन्ज, ३ वटा वन्यजन्तु आरक्ष, ३ वटा संरक्षण क्षेत्र र १ वटा शिकार आरक्ष लगायत ९ वटा मध्यवर्ती क्षेत्रको सञ्जाल रहेको छ । यी सवै गरेर नेपालको कूल भू-भागको १९.४ प्रतिशत अर्थात २८,५८५.६७ वर्ग कि.मि. क्षेत्रफल ओगटेको छ ।

राष्ट्रिय निकुन्ज तथा वन्यजन्तु संरक्षण विभागको प्रमुख उद्देश्यहरुमा नेपालका बहुमूल्य तथा विभिन्न वन्यजन्तु तथा वनस्पति तथा भू-दृश्यको संरक्षण, सुरक्षा एवं पुर्नोत्थान गर्नु रहेको छ ।

सन् १९८७ मा नेपाल रामसार महासन्धीको सदस्य राष्ट्र भएको थियो । राष्ट्रिय निकुन्ज तथा वन्यजन्तु संरक्षण विभाग यस महासन्धीको नेपाल कार्यान्वयन गर्ने प्रमुख निकायको रुपमा रहेको छ ।

जैविक विविधताको संरक्षणका निम्ति सन् १९६१ म स्थापना गरि एको डब्लु डब्लु एफ एक अन्तर्राष्ट्रिय गैरसरकारी संस्था हो । स्वीट्जरल्यान्डको ग्लैंमा केन्द्रिय कार्यालय रहेको यो संस्था ९० भन्दा बढी राष्ट्रहरुमा क्रियाशील छ । डब्लु डब्लु एफ एक स्वतन्त्र, गैरसरकारी, गैरराजनितिक, गैरधार्मिक र नाफारहित संस्था हो ।

डब्लु डब्लु एफले विश्वको प्राकृतिक वातावरणलाई निम्नीकृत हुनबाट जोगाई तल उल्लिखित कार्यहरूमार्फत मानिस र प्रकृतिबीच सामञ्जस्य रहने भविष्यको निर्माण गर्ने ध्येय राख्दछ :

- विश्वको प्राकृतिक विविधता जगेर्ना गरेर,
- पुनः प्रयोजनमा आउने प्राकृतिक स्रोतको दिगोपनलाई सुनिश्चित गरेर,
- प्रदूषण र अपव्ययी उपभोग न्यून गरेर ।




**राष्ट्रिय निकुञ्ज तथा वन्यजन्तु संरक्षण विभाग**
पो.ब.नं. ८६०, बबरमहल, काठमाडौं, नेपाल
फोन: ९७७-१-४२२०८५०, ४२२०९१२, ४२२७९२६
फ्याक्स: ९७७-१-४२२६६७५
ई-मेल: dnpwc@bdcin.wlink.com.np
वेबसाइट: www.dnpwc.gov.np



**डब्लु डब्लु एफ नेपाल**
**स्वच्छ जलसम्पदा कार्यक्रम**
पो.ब.नं. ७६६०, बालुवाटार, काठमाडौं, नेपाल
फोन: ९७७-१-४४३४८२०, ४४३४९७०, ४४१०९४२
फ्याक्स: ९७७-१-४४३८४५८
ई-मेल: info@wwfnepal.org
वेबसाइट: www.wwfnepal.org
www.panda.org/freshwater